श्रीः



# श्री कृष्ण

## नाम-संकीर्तन



लेखक तथा संकलन कर्ता

केशव लोहनी

प्रकाशकः-

श्री वेदप्रसाद लोहनी

"प्रकाश कुञ्ज"

नक्साल, काठमाडौं ।



पूज्य पिता स्व. रुद्र प्रसाद लोहनी

तथा

पूज्य माता स्व. तोयकुमारी लोहनीको

पुण्य स्मृतिमा समर्पित–२०५३

मुद्रकः-

आनन्द प्रिण्टिङ्ग प्रेस (प्रा.) लि.

बागबजार, काठमाडौं ।

फोन नं.: २–२१६२५,२–२३२६१



श्री गणेशाय नमः

# मन्तव्य

कलेर्दोषनिधे राजन्नस्ति ह्येको महान्गुणः ।
कीर्तनादेव कृष्णास्यमुक्त बन्धः परं ब्रजेत् ।।

यस उक्ती अनुसार कली युग सवदोषले भरिपूर्ण छ । तापनि यस्को एक महान गुण छ कि श्री कृष्णको कीर्तन द्वारा मनुष्यसारा वन्धन बाट मुक्तभएर परमात्मा परमेश्वरलाई प्राप्त गर्न सक्छ । श्री कृष्ण भजनाश्रमभक्त प्रेमीहरूले यही कुरालाई ध्यानमा राखेर श्रीकृष्ण-नाम-कीर्तनको सानो पुस्तिका भक्तजनको सामुन्ने पहिले नै प्रस्तुतगरेको थियो । त्यसबाट भक्तजनमा केही रूचि देखिएकोले पुनः श्री कृष्ण-नाम-कीर्तनको दोस्रो संस्करण पनि भक्तजनको सामुन्ने प्रभुको कृपा बाट प्रस्तुत भएको छ । श्री कृष्ण भजनाश्रमले प्रकाशक श्री वेदप्रसाद लोहनीलाई धन्यवाद ज्ञापन गर्दछ । यस्को श्रद्धा, विश्वास र साथै प्रेमपूर्वक सेवन भएमा प्राणी मात्रको कल्याण भएर जाने छ । श्री कृष्णार्पण मस्तुः ।

श्री कृष्ण भजनाश्रम

श्रीः

# नामकीर्तनको महिमा

**सत्यं सत्यं पुनः सत्यं भाषितं मम सुव्रत ।**
**नामोच्चारण मात्रेण महा पापात्प्रमुच्यते ॥**

ब्रह्माजी आज्ञा हुन्छ, हे नारद, मैले भनेको सत्य हो, सत्य हो, सत्य हो । भगवानको नाम उच्चारण गर्नाले मात्र पनि मानव ठूला ठूला पापबाट मुक्त भएर जान्छन् ।

**कृष्ण कृष्णेति कृष्णेति इति वाचो जपन् पठन् ।**
**इहलोक परित्यज्य मोदते विष्णु सन्निधौ ॥**

जो व्यक्ति कृष्ण ! कृष्ण ! कृष्ण ! यसरी जप कीर्तन गर्दछ भने त्यो, यो भवसागरलाई त्यागे पछि विष्णु धाममा पुगेर आनन्द भोग्दछ ।

**राम रामेति रामेति, रामेति च पुनर्जपन् ।**
**सचाण्डालोऽपि पूतात्मा जायते नात्र संशयः ॥**

राम ! राम ! राम ! राम ! यसरी जो बारम्बार जप गर्दछ, भने त्यो चाण्डाल भएता पनि पवित्र बन्दछ, सङ्का छैन ।

श्रीः

卐 卐 卐 श्रीकृष्ण 卐 卐 卐



श्री कृष्ण देवकिसुतं भगवन मुरारी।
गोपाल गोकुल पते दीन दुःख हारी।
गोविन्द दामोदर हे मन मन् मथारी।
पुराउ केशव हरे भवसागर पारी।

# श्री कृष्ण पुकार

नान्यं वदामि न भजामिन चिन्तयामि
त्वत्पादा पद्म युगलं सततं नमामि ।

एवंहिमामु पगत शरणा चरक्ष
दुरेण यान्तु मम पातक सञ्चयास्ते ॥

दासोऽस्मि भृत्य वदहंतव जन्म जन्म ।
त्वत्पाद पद्म युगलं सततं नमामि ॥

[अर्थात म न अरूको नाम नै लिन्छु न अरूलाई भज्दछु, न अरूको चिन्तन नै गर्दछु । नित्य निरन्तर प्रभुको युगल पदमा दण्डवत प्रणाम गर्दछु । यसरी म प्रभुको शरणमा आएको छु । मेरो रक्षा होस् । मेरा पापका समूह चाँडै नै नष्ट भएर जाउन । म नोकर सरह जन्मजन्मान्तर सम्म प्रभुको दास बनूँ । भगवनः हे ! कृष्णा चरणकमलमा कोटिकोटि दण्डवत प्रणाम गर्दछु ।

श्री गणेशाय नमः

# मङ्गला–चरण

(१)

हरे कृष्ण हरे कृष्ण भक्तवत्सल गोपते ।
नमस्ते बासुदेवाय नारायण जगत्पते ।

(२)

जस्को मातापिता गौरी शंकर नाम सिद्धिविनायक ।
हर्नेबिघ्न जति म गर्छु प्रणाम हे बिघ्न विनाशक ॥

(३)

गुरूर्ब्रम्हा गुरूर्विष्णु गुरूर्देवो महेश्वरः ।
गुरूसाक्षात्पर ब्रम्ह तस्मै श्री गुरवे नमः ॥

(४)

अखण्ड मण्डला कारं व्याप्तंयेन चराचरम् ।
तत्पदं दर्शितंयेन तस्मै श्री गुरूवे नमः ॥

(५)

अज्ञान तिमी रान्धस्य ज्ञानाञ्जन शला कया ।
चक्षु रून्मिलितं येन तस्मै श्री गुरूवे नमः ।

(६)

हे ! देवका देव तिमी विश्व बन्धु
हेनाथ अनाथका तिमी दीन बन्धु ।
सबका तिमी हौ तिमी नेत्र बिन्दु
पाउँ कसरी दर्शन करूणा सिन्धु ।

(७)

श्री कृष्ण योगेश्वर ब्रम्ह एक
चरा चरैमा छौं तिमी व्यापक ।
हौ सृष्टिकर्ता हौ तिमी पालक
पाउँ म दर्शन हे विश्व मालिक ॥

(८)

हे ! श्याम सुन्दर प्रभु मुरली मनोहर ।
आओस याद प्रभुको दिलमा निरन्तर ॥

(९)

त्वमेव माताच पिता त्वमेव
त्वमेव बन्धुश्च सखा त्वमेव ।
त्वमेव विद्या द्रविणं त्वमेव
त्वमेव सर्व ममदेव देव ।

(१०)

रामाय राम भद्राय राम चन्द्राय वेधसे ।
रघुनाथाय नाथाय सीताया पतये नमः ।

(११)

कृष्णाय वासुदेवाय हरये परमात्मने ।
प्रणत क्लेश नाशाय गोविन्दाय नमोनम ।।

(१२)

हे श्याम सुन्दर आउ । हे श्याम सुन्दर आउ ।

[१]

गर्छौं हामी कीर्तन प्रभुको वंशी तिमी बजाउ ।
भज्दछौं नाम श्रद्धा प्रेमले धुन मधुर सुनाउ ।।

[२]

सुन्दर रूप चन्चलनेत्र लीन प्रभु देखाउ ।
चित्त अतीनै व्याकुलछ यो ईच्छा प्रभु लौं पुन्याउ ।।

[३]

मिलि रहोस अवसर त्यो भजन प्रभु कै गावौं ।
लागोस प्रभुमा प्रेमा भक्ति माग्छौं प्रभु यही पावौं ।।

(१३)

हरेराम हरेराम राम राम हरे हरे ।
हरेकृष्ण हरेकृष्ण कृष्ण कृष्ण हरे हरे ।।

(१४)

श्रीमन्नारायण नारायण नारायण ।
भजमन नारायण नारायण नारायण ॥

(१५)

श्री राम जय राम जय जय राम ॥
श्री राम जय राम जय जय राम ॥

(१६)

राधेकृष्ण राधेश्याम राधेगोविन्दम् ।
राधेकृष्ण राधेश्याम राधे मुकुन्दम् ॥

(१७)

हरिवोल हरिवोल बोल हरिवोल ।
मुकुन्द माधव गोविन्द बोल ॥

(१८)

श्री कृष्ण गोविन्द हरे मुरारे ।
हे नाथ नारायण बासुदेव ॥

(१९)

रघुपति राघब राजा राम । पतित पावन सीता राम ।
सीता राम सीता राम । सीता राम जय सीता राम ॥
रघुपति राघब राजा राम । पतित पावन सीताराम ॥

(२०)

जय हनुमान जय हनुमान । शंकट मोचन कृपा निधान ॥

(२१)

जय गोविन्दं जय गोपाल, जय दामोदर दीन दयाल ।
जय गोविन्दं जय गोपाल, केशव माधव दीन दयाल ॥

(२२)

गोविन्द जय जय गोपाल जय जय ।
राधा रमण हरि गोविन्द जय जय ॥

(२३)

राम राघव राम राघव राम राघव पाहि माम् ।
कृष्ण केशब कृष्ण केशब कृष्ण केशब रक्षमाम् ॥

(२४)

शाम्ब सदा शिब शाम्ब सदा शिब ।
शाम्ब सदा शिब हर महादेव ॥

(२५)

ॐ नमः शिवाय हर हर भोला ।
ॐ नमः शिवाय हर हर भोला ॥

(२६)

जय जय देवी काली कल्याणी ।
जय जय अम्बे दुर्गे भवानी ॥

(२७)

हरिशरणम् प्रभु हरिशरणम् ।
हरिशरणम् प्रभु हरिशरणम् ॥

(२८) [भजन नं. १]

ॐ नमो भगवते वासुदेवाय ।

(१)

यहि मन्त्र हरिले हरलाई बताए ॥
कृष्णबाट अर्जुनले मन्त्र यहि पाए ॥

(२)

शिवले उमालाई मन्त्र यहि सुनाए ।
ध्रुवलाई नारदले मन्त्र यहि सिकाए ॥

(३)

व्यासले शुकलाई मन्त्र यहि पढाए ।
जप यहि मन्त्र छ अति कल्याण दाय ॥

(२९) [भजन नं. २]

गर्छु म कोटी प्रणाम प्रभुमा ।

(१)

गढें प्रभु म संसार कूपमा ।
बांधिबे माया मोह कामनामा ॥

लाग्यो यो बुद्धि भेद भावनामा ।
बचाउ कृष्ण म परें शरणमा ॥
(२)
नभो दया नै नत लाज भो ममा ।
लागें हर्दम परतुच्छ द्रव्यमा ॥
अल्झियें सित्तै ममताको पासमा ।
बचाउ कृष्ण म परें शरणमा ॥
(३)
बित्यो जीवन अपवित्रतामा ।
निन्दा र चुक्ली द्रोह स्वार्थतामा ।
आयो त्रय तापको त्रासमा
बचाउ कृष्ण म परे शरणमा ।
(३०)
[भजन नं. ३]
शरणा गतछु गिरीधर तिम्रो ।
(१)
तिमी हौ जीवन सर्वस्व मेरो एक छ भरोसा नाथ तिम्रो ।
छैन सहारा आधार कोही शरणा गतछु गिरीधर तिम्रो ।

फाले जीन्दगी विषय भोग मै भजनसकिन नाम तिम्रो ।
लागु कसरी पार प्रभु अब शरणा गतछु गिरीधर तिम्रो ।

(३)

महुँ चरणको दासानुदास, छाडि जाउँकाहाँ आश्रय तिम्रो ।
लिइ विश्वास आश चरण कै, शरणा गतछु गिरीधर तिम्रो ।

(३१) [भजन नं. ४]

राधे गोविन्द गोविन्द गोपाला
कृष्ण गोविन्द गोविन्द गोपाला ।

(१)

मथुरामा प्रभु जन्म लियौ, गोकुलका नन्द लाला ।
वृन्दावनका तिमी निवासी वृजका हौ प्रति पाला ॥

(२)

गऱ्यौ कृडा अनेक तिमीले, लिइसब वृज ग्वाला ।
बंशीवजाई रासरचायौ गोपी वल्लभ वाला ॥

(३)

पाऱ्यौ मोहित सारा जगको, रूपमनोहर वाला ।
दीनदुःखी अनाथसवका, हौ तिमी दीनदयाला ॥

(३२) [भजन नं. ५]

कसरी ठगियौं हरे कृष्ण भुल्यौं ।
किन अलमलियौं श्रीकृष्ण भजौं ॥

(१)

विषयमा रमी भोग मात्र भोग्यौं ।
घर परिवारकै ममता बटुल्यौं ॥
अभिमानी भयौं धनमान खोज्यौं ।
भेदभावलिई मतलबि बन्यौं ॥

(२)

जानि जानि कति अपराध गर्‍यौं ।
जानु पर्छ भन्ने याद त्यो लिएनौ ॥
अब आफ्नो भलो आफूले नै गरौं ।
तनमन धनले कृष्ण सेवा गरौं ॥

(३३) [भजन नं. ६]

बोल कृष्ण बोल कृष्ण कृष्ण बोल ।
लाग्छ यही काम बोल कृष्ण बोल ॥

(१)

एक फेरा बोल प्रेमले कृष्ण बोल ।
प्यारो कृष्ण नाम मन लागि बोल ॥

(२)

राखी कृष्ण मनमा मन्को पर्दा खोल ।
कृष्ण ज्योति बालि मन्को मैला पोल ॥

(३)

हरे कृष्ण बोल यो छ अनमोल ।
कृष्ण कृष्ण भजन पर्दैन मोल ॥

(३४)

[भजन नं. ७]

## सर्वस्व नै हौ मेरो कृष्ण तिमी

(१)

तिमी माता पिता सखा मित्र तिमी
हौ बन्धुबान्धव हितकारी तिमी ।
तिमी विद्द्या बुद्धि सदगुरू तिमी
हौ ज्ञान दाता भय त्राता तिमी ॥

(२)

मेरो आत्मा तिमी मेरो प्राण तिमी
मेरो मुटुका हौ धडकन तिमी ।
नयनका मेरा नानी नै हौ तिमी
सर्वस्व नै हौ मेरो कृष्ण तिमी ॥

(३)

श्वास श्वास तिमी रोम रोम तिमी
मेरो मन्मा तन्मा मेरो साथ तिमी ।
धर्म अर्थ कर्म जो छ जे छ तिमी
मेरो भाव तिमी मीठो बोली तिमी ॥

(४)

म हुँ तिम्रो दास मेरो स्वामी तिमी
हौ जीवन मेरा गति चाल तिमी ।
मेरो भन्नु कोछ एक मात्र तिमी
सर्वस्व नै हौ मेरो कृष्ण तिमी ॥

(१५) [भजन नं. ८]

बोल बोल हे मन प्रेमले बोल
राधे कृष्ण गोविन्द बोल ॥

[१]

नाम प्रभुको एक छ सार, जप्दछ जस्ले पाउँछ पार
पर्दैन नामको रत्तिभर मोल, राधे कृष्ण गोविन्द बोल ।

(२)

लाख चौरासी घुमी फेरी आयौं, अमूल्य नरतन तिमीले पायौं
अब हृदयको ढोका खोल, राधे कृष्ण गोविन्द बोल ॥

(३)

छन् अनेकन् नाम प्रभुको, नाम कै गर तिमी प्रेमले कीर्तन
नामको महिमा छ अनमोल, राधे कृष्ण गोविन्द बोल ॥

(३६) [भजन नं. ६]

भज कृष्ण नामनै यही मुख्य सार छ ।

(१)

झुठो यो सन्सार छ, स्वार्थि यो घरबार छ ।
राखि यस्मा ममता, भुल्नु लौ बेकार छ ॥

(२)

मेरो तेरो गर्नु नै, सम्झ यो निस्सार छ ।
लिन्छौ किन अभिमान, यहि नै संहार छ ॥

(३)

जानिबुझि फस्नु नै, माया यो अपार छ ।
कृष्ण विमुख हुन्छ जो, जन्म त्यो धिक्कार छ ।।

(३७) [आरती गान नं. १५]

ॐ जय पर ब्रम्ह तिमी ।

(१)

जय परमेश्वर सृष्टि कर्ता जय अविनाशी तिमी ।
व्याप्त रहेका विश्व भरी नै चेतन सबका तिमी ॥

(२)

गर्छौ पालन गर्छौ संहार जगत नियन्ता तिमी ।
कोछ जगतमा तिमी बाहेक आत्मा परात्मा तिमी ॥

(३)

लिन्छन् जगतले शरण तिमै गर्दैनौ मरण तिमी ।
शंकट भञ्जन भवभय हारी पतित पावन तिमी ।

(४)

चराचरैका आश्रय एक परात्पर पनि तिमी ।
जाने तिम्रो महिमा कस्ले अन्तर्यामी तिमी ॥

हे शरणागत वत्सल कृष्ण प्रभु ।

(१)

तिमी पूर्ण सनातन ब्रम्ह प्रभु ।
तिमी सच्चिदानन्द सत्य प्रभु ।
तिमी व्याप्त छौ कण कणमा प्रभु ।
हाम्रो लेउ अब यो शरण प्रभु ॥

(२)

तिमी मालिक चरा चरकै प्रभु ।
तिमी चेतन आत्मा सबका प्रभु ।
तिमी ज्ञान करूणाका खानी प्रभु ।
हाम्रो लेउ अब यो शरण प्रभु ॥

(३)

तिमी दुःखिका हौ दीन बन्धु प्रभु ।
तिमी भक्तका हौ भय हारी प्रभु ।
हामी तिम्रो सेवक दास प्रभु ।
हाम्रो लेउ अब यो शरण प्रभु ॥

(३९)

अच्युतं केशवं राम नारायणम् ।
कृष्ण दामोदरं बासुदेबं हरिम् ।
श्रीधरं माधबं गोपीका वल्लभं ।
जानकि नायकं राम चन्द्रं भजे ॥

(४०)

मंगल भवन अमंगल हारी । द्रवहुस दशरथ अजर विहारी
अब प्रभु कृपा करहुँ यहिभांति। सब तजि भजन करूँ दिनराति
दीन दयाल विरूदु सभारी। हरहु नाथ मम संकट भारी
कलियुग योगन जज्ञन ज्ञाना । एक आधार राम गुन गाना
तर हिन वीनुसें हेमम स्वामी। राम नमामी नमामी नमामी
मोरे मन प्रभु अस विशवासा। रामते अधिक राम कर दासा
मनते सकल वासना भागि। केवल राम चरण लय लागि

(४१)

करार विन्देन पदार विन्दं ।
मुखार विन्देऽभिनि बेश यन्तम् ।
वटस्य पत्रस्य पुटे शयानं ।
वालं मुकुन्दं मनसा स्मरामी ।

## श्री कृष्ण तिम्रो जय जय होस ।

(१)

संसारका जीवना धार तिमी । भव पार उतारक हौ तिमी ।
करूणा सिन्धु कृपालु तिमी, श्रीकृष्ण तिम्रो जय जय होस ।

(२)

म छु दीन हीन अनाथ प्रभु । तिमी दीनका दीन दयालु प्रभु ।
सबका जीवन रक्षक तिमी श्री कृष्ण तिम्रो जय जय होस ॥

(३)

गजको फन्दा छुटायौ तिमीले । द्रौपदी लाज बचायौ तिमीले ।
शरणा गतका पालक तिमी । श्रीकृष्ण तिम्रो जय जय होस् ॥

(४)

गर्छु म प्रभुमा सदा पुकार । नरहोस मनमा कुनै विकार ।
जगजीव उद्धारक हौ तिमी । श्रीकृष्ण तिम्रो जय जय होस ॥

त्वदियं बस्तु गोविन्द तुभ्यमेव समर्पितम्

श्री कृष्णार्पण मस्तु ।

(४३) [भजन नं. १]

तिमी राम राम भजी बाँच, तिमी राम राम भजी बाँच ।।

(१)

फाल्छौ समय भुली गृहस्थीमा, संझ गृहस्थीहो कांच ।
गर्दै राममा श्रद्धा विश्वास; राम राम भजी बांच ।।

(२)

हृदय तिम्रो शुद्ध छ छैन, आफैं तिमी लौ जांच ।
काम क्रोध अभिमान फाल्दै, राम राम भजी बांच ।।

[३]

लेउ सार छ नाम रामको, जप्दै भक्ति लौ सांच ।
गाये वेदले राम महिमा, राम राम भजी बांच ।।

(४४) [भजन नं. २]

ॐ हर हर हर महादेव

(१)

जय गौरी पते कैलाश पते, जय शिव शंकर शम्भो ।
नाथ दिगम्बर नाम छ तिम्रो, शरण सदा लेउ हाम्रो ।।

(२)

पाँच मुख छन् तिन नजर, रूप मनोहर नंगा ।
चन्द्र मुकुट अतीसयसुन्दर, माथमा कञ्चन गंगा ।।

(३)

बाँया काखमा गौरी भवानी, नन्दी माथि सवारी ।
कण्ठ छ निलो काल कूटले, भक्तका हौ रखवारी ॥

(४)

नाग हार छन् शान्त मुर्ति, जगका पालन कर्ता ।
करमा डमरु त्रिशुल धारी, सबका हर्ता भर्ता ॥

(५)

अष्ठसिद्धि अगल बगलमा, भूतगणहरू साथमा ।
भक्तलाई दिने अभयवरदान, पर्दछु तिम्रै चरणमा ॥

(४५) [भजन नं. ३]

## तिमी छौ मंगल दायक ।

(१)

गौरी सुतहे लम्बोदर, विघ्न विनास विनायक ।
विद्या बुद्धि ज्ञान म पाउँ, तिमी छौ मंगल दायक ॥
नाम छ तिम्रो एक दन्त, गण पति गण नायक ।
विघ्न बाधा सबै हटाउ, तिमी छौ मंगल दायक ॥

(२)

रूप छ तिम्रो मंगलमूर्ति, उमानन्द सुख दायक ।
जीवन मेरो सफल तुलाउ, तिमी छौ मंगल दायक ।
अष्ठसिद्धि ऋद्धिपते गजवक्र हे गुणनायक ।
पाउ म पर्छु मंगल पाउँ, तिमी छौ मंगल दायक ॥

(४६) [भजन नं. ४]

लेउ तिमी हरि नाम ।

(१)

नाशवान छ यो जीन्दगानी, छोड तिमी अभिमान ।
जानु पर्छ एक दिन छाडि, लेउ तिमी हरि नाम ॥

(२)

जगमा कोही रहेनन् आखिर निर्बल होस बलवान् ।
साथमा तिम्रो जाँदैन केही, लेउ तिमी हरि नाम ॥

(३)

नाम र कीर्ति रहन्छ केवल नगर गर्ज गुमान ।
जानु छ लिएर पाप र पुण्य लेउ तिमी हरि नाम ।

(४)

तृप्ति हुँदैन काम र भोगको, आखिर हुन्छन् विष समान ।
विषयबाट आशक्ति झिकी, लेउ तिमी हरि नाम ॥

(४७) [भजन न. ५]

हे मुरलीधर हे मन मोहन, छाडि चरण काहाँ जाउँ प्रभु ।

(१)

गजको फन्दा छुटायौ तिमीले, द्रौपदी लाज बचायौ प्रभु ।
पाए सुदामाले सुख ऐश्वर्य, हे भक्तबत्सल प्रेमी प्रभु ॥

(२)

लिइ नृसिंह अवतार आखिर, भक्त प्रल्हाद बचायौ प्रभु ।
तार्‍यौ अजामिल सदन गणिका, पतितका तिमी पालन प्रभु ॥

(३)

निर्धनका धन निर्बलका बल, अनाथका तिमी नाथ प्रभु ।
निराधारका तिमी एक आधार, शरणा गतका प्रतिपाल प्रभु ॥

(४८) [भजन नं. ६]

करम लेखा टारेर टर्दैन यो, करम लेखा टारेर टर्दैन यो ।

(१)

यो भोग तिमीले भोग्नु नै पर्छ, बाँडेर बाँडिन्न यो ॥
मर्नु नै पर्छ एक दिन अवश्य, सारेर सर्दैन यो ।

(२)

जो हुनु पर्ने नभई छोड्दैन, छेकेर छेकिन्न यो ।
सुख र दुःख आउँछ जान्छ, राखेर रहन्न यो ॥

[३]

आत्मा छ संगमा नासिन्न कहिले, पोलिन्न काटिन्न यो ।
चिन्तन गर त्यसैको हर्दिन, छुट्दछ बन्धन यो ॥

(४६) [भजन नं. ७]

सदा राखौं यो मन हाम्रो, जगन्माता श्री कालीमा ।

(१)

भजन तिन्को सधैं गावौं, शरण तिन्को सधैं लेवौं ।
गरौं चिन्तन सदा उनकै, लगाई चित्त कालीमा ॥

(२)

गरौं पूजा सदा प्रेमले, गरौं सेवा यो तनमनले ।
गरौं ध्यान त्यो स्वरूपको, लगाई चित्त कालीमा ॥

(३)

पुकारौं याद त्यो आवस, पुकारौं दुःख सब जावस ।
अनाथ हामी दया मागौं, लगाई चित्त कालीमा ॥

(४)

भरोसा छैन कोही हाम्रो, कृपा माइको सधैं पावौं ।
चरण पक्री परौं पीछा, लगाई चित्त कालीमा ॥

भजमन राधे श्याम रे, भजमन राधे कृष्ण रे।

बृन्दा बनमा वंशी बजायो, राधा संगमा रास रचायो।
हो त्यो रास विहारी रे।
भजमन राधे श्यामरे, भजमन राधे कृष्ण रे।

(१)

गोपीहरूको चित्त चुरायो।
मखन दही लौ लुटी खायो, हो त्यो मखन चोर रे।
भजमन राधे श्याम रे, भजमन राधे कृष्ण रे।

(२)

कालिय नागको दमन गरायो, दुष्ट दैत्यको संहार पाऱ्यो।
हो त्यो सुदर्शन धारी रे।
भजमन राधे श्याम रे, भजमन राधे कृष्ण रे।

(३)

दुर्योधनको मोगन खायो, साग विदुर घर गई खायो।
हो त्यो प्रेम पुजारी रे
भजमन राधे श्याम रे, भजमन राधे कृष्ण रे।

(४)

इन्द्र कुपित भै जल वर्षायो, गिरी राज उचाली ब्रज बचायो
हो त्यो गोवर्धन धारी रे
भजमन राधे श्याम रे, भजमन राधे कृष्ण रे।

(५)

भक्त सुदामा कनिका ल्यायो, प्रेमले प्रभुले भोग लगायो
हो त्यो दीन दुखारी रे।
भजमन राधे श्याम रे, भजमन राधे कृष्ण रे।

(६)

[भजन नं. ६]

दिल यो मेरो छटपटियो कहिले देखुंला श्याम रे।

(१)

रूप उनको कति मनोहर, पूर्ण चन्द्र झैं झल्कने
कीरिट कुण्डल हार शोभित, अंग अंग चम्किने।

(२)

पार्ने मोहित भोलेनाथको, विश्व मोहिनी रूपले
हर्ने चित्त यो गोपीहरूको, मधुर वंशी तानले।

(३)

लाज बचायौ द्रौपदीको, वस्त्र बन्दै तिमीले
शागविदुर घर गई तिमीले, भोग लगायौ प्रेमले।

(४)

ब्रम्हा शंकर ऋषिमुनि योगी, जस्को गर्छन ध्यान र
सबको आत्मा ब्रम्हा सनातन, सबका तिमी चेतन रे।

(५)

सबमा राखनु प्यार समता, यहि सिकायौ तिमीले
पाउँछ दर्शन जसले कीर्तन, गर्छ शुद्ध चित्तले ।

[भजन नं. १०]

यदुकूल भूषण यदु पति श्याम भव भय हारी राधे श्याम
जलमा श्याम स्थलमा श्याम सर्वत्र व्यापक श्यामा श्याम

(१)

शंकर शंकट मोचन श्याम, योगी जनका ईश्वर श्याम
नन्द यशोदाका मखन श्याम, देवकी नन्दन प्राणा श्याम

(२)

गोपिहरुका प्रितम श्याम, हौ रूक्मीणिका सुन्दर श्याम
कुब्जाका तिमी मोहन श्याम, राजा नृगकातारक श्याम

(३)

भक्त सुदामा उद्धारक श्याम, द्रौपदीका हौ रक्षक श्याम
हौ वासुदेवका सर्वस्व श्याम, कंसादिका मारक श्याम

[भजन न. ११]

लाउ चित्त यो कृष्ण भजनमा, फिराउ नामको माला ।

(१)

हेर जगयो स्वप्न सरि छ, चार दिनको हो मेला ।
आखिर यमको दण्ड खाइ, पर्छौं कालको फेला ॥

(२)

दुःख झेलि धन बटुल्छौ, पाई पाई अधेला ।
जाँदैन संगमा तिम्रो केहि, जान्छौ तिमी अकेला ॥

(३)

लिई विषयकै ध्यान निरन्तर, नफाल अमूल्य चोला ।
माया मोह त्यागि अभिमान, फिराउ नामको माला ॥

[भजन नं. १२]

मुरलिया ! आखिर छौ तिमी एक ।

(१)

रचायौ सारा विश्व चराचर रचायौ लोका लोक ।
धर्‍यौ तिमीले रूप अनेक आखिर छौ तिमी एक ॥

(२)

मार्ग अनेक वाद अनेक साधन योग अनेक ।
बन्छौ उस्तै भाव अनुसार आखिर छौ तिमी एक॥

(३)

कसरी जानु रहस्य तिम्रो छैन म मा त्यो विवेक ।
यो भव सिन्धु पार उतार्ने आखिर छौ तिमी एक ॥

करार विन्देन पदार विन्दं मुखार विन्दे विनिवेशयन्तम् ।
वटस्य पत्रस्य पुटे शयानं वालं मुकुन्दं मनसा स्मरामि ॥
श्रीकृष्ण गोविन्द हरे मुरारे हेनाथ नारायण वासुदेव ।
जिव्हे पिवस्वामृत मेतदेव गोविन्द दामोदर माधवेति ॥
विक्रेतुकामा किलगोपकन्या मुरारिपादार्पित चित्तबृत्तिः ।
दध्यादिकं मोहवशा दवोचद् गोविन्द दामोदर माधवेति ॥
गृहे गृहे गोपवधूकदम्बः सर्वै मिलित्वा समवाप्य योगम् ।
पुण्यानि नामानि पठन्ति नित्य गोविन्द दामोदर माधवेति ।
सुखं शयाना निलयेनिजेपि नामानि विष्णोः प्रवदन्ति मर्त्याः ।
तेनिश्चितं तन्मयतां व्रजन्ति गोविन्द दामोदर माधवेति ॥
जिव्हे सदैवं भज सुन्दरणि नामानि कृष्णस्य मनोहरणि ।
समस्त भक्तार्ति विनाशनानि गोविन्द दामोदर माधवेति ॥
सुखा बसाने इदमेवसारं दुःखा बसाने इदमेव ज्ञेयम् ।
देहा बसाने इदमेव जाप्यं गोविन्द दामोदर माधवेति ॥
श्रीकृष्ण राधावर गोकुलेश गोपाल गोवर्धननाथ विष्णो ।
जिव्हे: पिवस्वा मृतमेत देव गोविन्द दामोदर माधवेति ॥

२०५३ श्रावण ११ गते देखि चतुर्मास श्रीमद्भागवत महायज्ञ
आयोजना गरेको पुनीत अवसरमा श्री वेद प्रसाद
लोहनीद्वारा श्री बुढानिलकण्ठ सनातन धर्म
सेवा समाजलाई निशुल्क समर्पण ।